कि म श्री ५ महाराजाधिराज र मौसूफको उत्तराधिकारीहरू प्रति तथा कानूनद्वारा स्थापित अन्तरीम विधानप्रति श्रद्धा र निष्ठा राख्नेछु र आफूले ग्रहण गर्न लागेको पदको कर्तव्यहरूको पालन श्रद्धापूर्वक गर्नेछु ।

(नेपाल गजेट २०११।७।३०)

स्वस्ति श्री गिरिराज चक्रचूडामणि नरनारायणेत्यादि विविध विरुदावली विराजमान मानोन्नता ओजस्वी राजन्यप्रोज्जवल नेपालतारा ॐ रामपट्ट अतुलज्योतिर्मय त्रिशक्तिपट्ट अतिप्रबल गोरखादक्षिबाहु महाधिपति सर्वोच्च कम्याण्डर इन चीफ श्रीमन्महाराजाधिराज श्री श्री श्री महाराज त्रिभुवनवीरविक्रम जङ्गबहादुर शाहबहादुर शमशेर जङ्गदेवानाम सदा समरविजयिनाम् ।

## नेपाल अन्तरिम शासनविधान, दोस्रो संशोधन २००८

प्रधान न्यायालयको राम्रो संगठन र संचालनको लागि नेपाल अन्तरिम शासनविधान २००७ लाई संशोधित गर्ने ।

## यौटा ऐन



प्रस्तावनाः- प्रधान न्यायालयको राम्रो संगठन र संचालन व्यवस्था दिनाको लागि केही अदल बदल र थप गर्नुपर्ने आवश्यक देखिएकोले मन्त्रमण्डलको सल्लाहअनुसार यो ऐन जारी भएको छ ।

१ क. यो ऐनको नाम--नेपाल अन्तरिम शासनविधान, दोस्रो संशोधन २००८ हुनेछ ।

ख यो ऐन तुरून्त लागू हुनेछ ।

२ अन्तरीम शासनविधानको दफा ३० को उपदफा २मा--प्रधान न्यायालयसँग सल्लाह लिइनेछ-को पछि,- यस किसिमको नियुक्ति एक वर्षको नोकरी पुगेपछि सदर गर्ने गरी अस्थायीरूपमा हुन सक्तछ-थप्ने ।

३ दफा ३० को उपदफा ३ मा नागरिक नभई र,--को पछि र उपदफा ३ को 'क, को अगि—जहाँसम्म हुन सक्छ, थप्ने। क. र ख. बाट कमसेकम झिक्ने फेरि यही दफाको अन्त्यमा न्यायाधीशहरू छात्र उच्चशिक्षासम्बन्धी विशिष्टता एशं अदालततर्फ र कानूनको राम्रो अनुभवको पनि विचार राखिनेछ, --थप्ने ।

४ दफा ३० को उपदफा ५ मा 'अयोग्ग ठहरिएमाको पछि, -मन्त्रिमण्डलमा कमसेकम ३ खण्डको, -- अगाडि 'सल्लाहकार समितिको पनि राय बुझी-थप्ने ।

५ पुरानो दफा ३१ लाई निम्न लिखित सच्याइएको रुपमा पढ्ने. – ३१ प्रधान न्यायालयको आदेश फैसलाहरू अकाट्य प्रमाण भनी माने हुनेछ । प्रधान न्यायालयको र सो मातहतका अदालतहरूको अवहेलनासम्बन्धी सजाय गर्ने अख्तियार यस प्रधान न्यायालयलाई हुनेछ ।

(नेपाल गजेट २००९।३।१०)

# नेपाल अन्तरिम शासनविधान, दोस्रो संशोधन २००९

स्वस्ति गिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविध विरुदावली विराजमान मानोन्नत ओजस्वी राजन्यप्रोज्जवल नेपालतारा ॐ रामपट्ट गौरव रामपट्ट अतुलज्योतिर्मय त्रिशक्तिपट्ट अतिप्रबल गोरखादक्षिबाहु, महाधिपति सर्वोच्च कम्याण्डर इन चीफ श्रीमन्महाराजाधिराज श्री श्री श्री महाराज त्रिभुवनवीरविक्रम जङ्गबहादुर शाहबहादुर शमशेर जङ्गदेवानाम सदा समरविजयिनाम् ।

नेपालको निमित्त एउटा सल्लाहकार सभाको गठन गर्नाको लागि, नेपाल अन्तरीम शासन विधान, २००७ लाई संशोधित गर्ने ---

## एउटा ऐन



प्रस्तावनाः- देशको शासन प्रबन्धमा जनताको प्रतिनिधिहरूलाई अझ बर्ता सम्मिलित गराउनाको निमित्त श्री ५ महाराजाधिराज र मौसूफको मन्त्रिमण्डललाई आफ्नो कार्यको सम्पादनमा सहायता र सल्लाह दिने एउटा सल्लाहकार सभाको गठन आवश्यक तथा वाञ्चनीय भएकोले देहायका अधिनियमहरू बनाइएका छन् ।

१. (१) यस ऐनको नाम नेपाल अन्तरीम शासनविधान (दोस्रो संशोधन) २००९ हुनेछ ।

(२) यो ऐन तुरून्त लागू हुनेछ ।

## परिभाषा

१ प्रसंगबाट अर्कै अर्थ नलागेसम्म, यस ऐनमा--

प्रधान ऐन- नेपाल अन्तरीम शासन विधान २००७ लाई भन्नेछ ।

सभा- सल्लाहकार सभालाई भनिनेछ ।

अरू शब्दहरूको, जसको परिभाषा यहाँ दिइएको छैन, उही अर्थ र महत्व हुनेछ, जो कि उनीहरूको प्रधान ऐनमा थियो ।

प्रधान ऐन भाग ३ को परिच्छेद १ कार्यकारिणी अधिकारपछि निम्नलिखित अर्को परिच्छेद थपिनेछ ।

## परिच्छेद १ (क) सल्लाहकार सभा

### साधारण



२८ क. (१) नेपालमा एउटा सल्लाहकार सभाको गठन हुनेछ, जसको सदस्यहरूको संख्या श्री ५ महाराजाधिराजले तोकिबक्सेबमोजिम हुनेछ, र जो कि श्री ५ महाराजाधिराजले नेपालका प्रामाणिक नागरिकहरूमध्येबाट मनोनीत हुनेछन् र जसमा नेपाल सरकारका सबै मन्त्री, राज्यमन्त्री तथा उपमन्त्री पदेन सदस्य हुनेछन् ।

(२) संविधान सभाको गठन भएपछि सल्लाहकार सभाको अस्तित्व समाप्त हुनेछ।

२८ ख. सभाका गैर सरकारी सदस्यहरूमा, सकेसम्म देशको विभिन्न भाग, वर्ग तथा विचारधाराको प्रतिनिधित्व गर्ने व्यक्तिहरू छानिनेछन् ।

२८ ग. (१) नेपालका नागरिक,

(२) २५ वर्ष पुगिसकेको, तथा-

(३) तल २८ घ. मा दिइएको अयोग्यता-रहित-

नभइकन कुनै व्यक्ति पनि सल्लाहकार सभाका सदस्य मनोनीत हुने योग्य हुनेछन ।

२८ घ. (१) देहायका व्यक्तिहरू सल्लाहकार सभाका सदस्य चुनिन अयोग्य हुनेछैन ।

(क)नेपाल सरकारको मातहतमा कुनै लाभको पद धारण गरेका व्यक्तिहरू ।

(ख) अदालतद्वारा नैतिक विकृति तथा भ्रष्टाचारको अभियोगमा दोषी सावित भएका व्यक्तिहरू ।

(ग) मगज बिग्रेका व्यक्तिहरू ।

तर यस दफाको लागि, नेपालको मन्त्रिमण्डलको सदस्य अथवा राज्यमन्त्री अथवा उपमन्त्री भएको व्यक्तिलाई लाभको पद धारण गरेको व्यक्ति मानिनेछैन।

(२) कुनै व्यक्ति पनि शपथग्रहण नगरिसकेसम्म सभाको सदस्य मानिनेछैन।

२८ ङ. (१) सल्लाहकार सभाको कुनै सदस्यले पनि निम्नलिखित कुनै अवस्थामा पनि आफ्नो स्थान रिक्त गरेको ठहरिनेछ :-

(क) आफ्नो हस्ताक्षरमा लिखित त्यागपत्र सभाको अध्यक्षलाई पेश गरेमा, अथवा-

(ख) दफा २८ ग. मा लेखिएको अयोग्यताको भागी हुन गएमा, अथवा,

(ग) २५ दिनको अवधिसम्म सभाको बैठकहरूमा, सभाको अनुमति बिना अनुपस्थित रहेमा,

तर यो २५ दिनको अवधिको गणनामा, सभाको स्थगनकार्य यदि लगातार ४ दिनभन्दा बर्ता छ भने, सम्मिलित गरिनेछैन ।

(२) कुनै सदस्य, दफा २८ ग. मा वर्णित अयोग्यताको भागी हुन गएको छ अथवा छैन भन्ने कुनै प्रश्न उठ्यो भने, सो प्रश्न निर्णयको निमित्त श्री ५ महाराजाधिराजमा पेश गरिनेछ र मौसूफको निर्णय अन्तिम हुनेछ ।

२८ च. सभाका सदस्यहरूले पाउने वेतन तथा भत्ता श्री ५ महाराजाधिराजले तोकिबक्सेबमोजिम हुनेछ ।

२८ छ. यदि कुनै व्यक्ति शपथग्रहण गर्नु भन्दा पहिले नै अथवा आफू सदस्यताको निमित्त योग्य छैन अथवा अयोग्य छु भन्ने थाहा पाएर पनि सभाको बैठकमा सदस्यको हैसियतले बस्दछ अथवा मत दिन्छ भने, सो व्यक्तिलाई सभामा बसेको अथवा मत दिएको प्रत्येक दिनको मोरू १००। का दरले जरिवाना गरिनेछ, जो कि उसँग राज्यलाई देय ऋणको रूपमा असूल गरिनेछ ।

२८ ज. सभामा कुनै स्थान रिक्त भएमा, त्यसको पूर्ति गर्ने अधिकार श्री ५ महाराजाधिराजलाई रहनेछ ।

## सभाका पदाधिकारीहरू

२८ झ. श्री ५ महाराजाधिराजले तोकिबक्सेको सदस्य अथवा व्यक्तिको सभापतित्वमा, सल्लाहकार सभाले आफ्नो अधिवेशनको प्रथम बैठकमा, दुइ जना सदस्यलाई क्रमशः आफ्नो अध्यक्ष तथा उपाध्यक्ष चुन्नेछ र पछि पनि जैले जैले अध्यक्ष अथवा उपाध्यक्षको पद रिक्त हुनेछ, कुनै अन्य सदस्यलाई, स्थितिअनुसार अध्यक्ष अथवा उपाध्यक्ष चुन्नेछ । अध्यक्ष र उपाध्यक्षको चुनाव सभामा उपस्थित सदस्यहरूको बहुमतले गरिनेछ, तथा सभाका पदेन सदस्यहरू यी पदका चुनावको निमित्त उम्मेदवार खडा हुन पाउनेछैन ।

२८ ञ. सल्लाहकार सभाको अध्यक्ष तथा उपाध्यक्षको पद धारण गर्ने सदस्यः-

(१) यदि सल्लाहकार सभाको सदस्य रहँदैन भने , आफनो स्थान रिक्त गर्नेछ ।

(२) आफ्नो हस्ताक्षरमा लिखित श्री ५ महाराजाधिराजलाई सम्बोधित पत्रद्वारा पद-त्याग गर्न सक्नेछ ।

(३) आफ्नो पदबाट सभामा उपस्थित सदस्यहरूको ३ खण्डमा २ खण्डको बहुमतले पास भएको प्रस्तावद्वारा हटाइन सक्नेछ ।

२८ ट. (१) सभाको अध्यक्षको पद रिक्त भएमा उपाध्यक्ष तथा उपाध्यक्षको पनि स्थान रिक्त भएमा श्री ५ महाराजाधिराजले यस प्रयोजनको निमित्त खटाइबक्सेको सदस्यले, त्यस पदको कर्तव्यको पालना गर्नेछ ।

(२) सभाको कुनै बैठकमा, अध्यक्षको अनुपस्थितिमा उपाध्यक्षले तथा उपाध्यक्षको पनि अनुपस्थितिमा, कार्यविधिको नियमानुसार सभाले निर्धारित गरेको व्यक्तिले अध्यक्षको रूपमा कार्य गर्नेछ ।

२८ ठ. सभाको अध्यक्षलाई अथवा अध्यक्षको रूपमा कार्य गरिरहेको उपाध्यक्ष अथवा अन्य कुनै व्यक्तिलाई प्रथमतः मत दिने अधिकार रहने छैन, तर मत बराबर बाँडिएको स्थितमा, आफ्नो निर्णायक मत दिने अधिकार रहनेछ ।

२८ ड. अध्यक्षलाई हटाउने प्रस्ताव विचाराधीन भएको समयमा अध्यक्षले, तथा उपाध्यक्षलाई हटाउने प्रस्ताव विचाराधीन भएको समयमा उपाध्यक्षले सभामा पदासीन हुन पाउनेछैन ।

२८ ढ. अध्यक्ष तथा उपाध्यक्षले पाउने वेतन र भत्ता श्री ५ महाराजाधिराजले तोकिबक्सेबमोजिम हुनेछ ।



## सभाको आह्वान र अधिवेशन

२८ ण. (१) सल्लाहकार सभा प्रत्येक वर्षमा कमसेकम दुइ पटक आह्वान गरिनेछ र एक अधिवेशनको अन्तिम बैठक तथा अर्को अधिवेशनको प्रथम बैठकको बिचमा ६ महीनाको काल व्यतीत हुन पाउनेछैन ।

(२) माथि उपदफा (१) को अधीन रही श्री ५ महाराजाधिराजले समय समयमा-

(क) उपयुक्त संझिबक्सेको स्थान र समयमा सभालाई आह्वान गर्न सकिबक्सनेछ ।

(ख) सभाको अधिवेशन भङ्ग गर्न सकिबक्सनेछ ।

२८ त. श्री ५ महाराजाधिराजले, प्रत्येक अधिवेशनको प्रारम्भमा, सभालाई सम्बोधन गरिबक्सनेछ, सभाको आह्वानको कारण ज्ञात गराइबक्सनेछ ।

२८ थ. (१) श्री ५ महाराजाधिराजले सभालाई सम्बोधन गर्ने सकिबक्नेछ र यस प्रयोजनका निमित्त सदस्यहरुको उपस्थिति चाहना सोधिबक्सन्छ ।

(२) श्री ५ महाराजाधिराजले सभालाई सभाको समक्ष प्रस्तुत विषय अथवा अन्य कुनै विषयको सम्बन्धमा सन्देश पठाउन सकिबक्सनेछ, र सभाले त्यस सन्देशमा लिखित विषयमाथि सुविधा अनुसार यथाशीघ्र विचार गर्नेछ ।



## सभाको कार्यसञ्चालन

२८ द. सभाको प्रत्येक सदस्यले आफ्नो आसन ग्रहण गर्नुभन्दा पहिले श्री ५ महाराजाधिराज अथबा मौसूफबाट त्यस कामको निमित्त नियुक्ति गरिबक्सेको व्यक्तिको समक्ष पहिले अनुसूचिमा दिइएको बेहोराअनुसार शपथ ग्रहण गर्नेछ ।

२८ ध. (१) यस ऐनमा अन्यथा लेखिएबाहेक, सभाको बैठकमा सबै प्रश्नहरूको निर्णय अध्यक्ष अथवा अध्यक्षको कार्य गरिरहेको व्यक्तिबाहेक, अरू उपस्थित र मत दिने सदस्यको बहुमतद्वारा गरिनेछ ।

(२) सभाको कुनै स्थान रिक्त भएकोले अथवा कुनै अनधिकृत व्यक्तिले सभामा मत दिएको अथवा कुनै अन्य प्रकारले भाग लिएको पछि थाहा पाइनगएकोले सभाको कार्यवाही अमान्य हुनेछैन ।

(३) सभाको बैठकको निमित्त सदस्यहरूको आवश्यक उपस्थिति संख्या २५ हुनेछ ।

(४) सभाको बैठक कालमा सदस्यहरूको संख्या यदि आवश्यक उपस्थिति संख्याभन्दा कम हुन गयो भने, अध्यक्षले अथवा अध्यक्षको कार्य गरिरहेको व्यक्तिले या त आवश्यक उपस्थिति संख्या पूरा नहुन्जेलसम्म सभाको कार्यवाही रोकिदिनेछ, अथवा सभालाई स्थगित नै गरिदिनेछ ।

## सदस्यहरूको विशेषाधिकार

२८ न. (१) यस ऐनको तथा सभाको कार्यविधिका नियमहरूको भित्र सभामा वाकस्वतन्त्रता रहनेछ ।

(२) सभामा अथवा सभाको कुनै समितिमा भनेको कुनै कुरा अथवा दिइएको सम्बन्धमा, सभाको कुनै सदस्यको विरुद्ध कुनै न्यायालयमा पनि केही कार्यवाही चल्न सक्तैन । न कुनै व्यक्तिकै विरुद्धमा सभाको अधिकृतद्वारा अथवा सभाको अधीन रही कुनै रिपोर्ट, पत्र, मत तथा कार्यवाहीको प्रकाशन गरेको सम्बन्धमा नै यस प्रकारको कुनै कार्यवाही चल्न सक्नेछ ।

## सल्लाकार सभाको शक्ति

२८ प. सल्लाहकार सभाले, निम्न लिखित कुराहरूबाहेक सरकारको व्यवस्थापक तथा कार्यकारिणी कृत्यहरूसँग सम्बन्धित कुनै विषयमाथि पनि छलफल गर्न सक्नेछः-

(१) यस्ता कुराहरू जसमाथि छलफल गर्दा नेपाल सरकारको कुनै विदेशी राष्ट्रसँगको मैत्रीपूर्ण सम्बन्धमा खलल गर्न सक्नेछ ।

(२) श्री ५ महाराजाधिराज तथा मौसूफको परिवारका सदस्यहरूको व्यक्तिगत आचरणसम्बन्धी कुराहरू ।

(३) यस्ता कुराहरू जसलाई प्रकट गर्दा सार्वजनिक अहित हुनजाने, सम्भावना हुन्छ । जस्तै कि सैन्यदलको खटन तथा गतिविधि ।

(४) कुनै मन्त्री अथवा सम्पूर्ण मन्त्रिमण्डलमाथि अविश्वासको प्रस्ताव ।

२८ फ. सल्लाहकार सभामा छलफल नगराई तथा मत नलिई, कुनै पनि कानून श्री ५ महाराजाधिराजको स्वीकृतिको निमित्त मौसूफमा पेश गर्न सकिनेछैन ।

२८ ब. सल्लाहकार सभाको कुनै सदस्यले पनि, दफा २८ घ. मा लेखिएका कुराहरूबाहेक, सरकारको व्यवस्थापक तथा कार्यकारिणी कृत्यहरूसँग सम्बन्धित कुनै अरू विषयको बारेमा पनि प्रश्न सोध्न पाउनेछ ।

२८ भ. सभाको कुनै सदस्यले पनि अध्यक्षको अनुज्ञा लिई तथा सभाको कार्यविधिको नियमानुसार चली सभाका विचारार्थ, कुनै बीलमा प्रस्ताव प्रस्तुत गर्न सक्नेछ ।

२८ म. श्री ५ महाराजाधिराजले आफ्नो विवेकले, सभाद्वारा पास गरिएको कुनै बील प्रस्तावलाई आफ्नो अनुमति दिन अस्वीकार गर्नसकिबक्सनेछ । अथवा आफूले उचित सम्झिबक्सेको हेरफेर तथा संशोधनसहित सभाको पुनः विचारार्थ फर्काइदिन सकिबक्सिनेछ ।

२८ य. सभाले यदि कुनै सरकारी बील या प्रस्तावलाई अस्वीकार गर्दछ अथवा श्री ५ महाराजाधिराजद्वारा प्रस्तावित हेरफेर तथा संशोधनलाई स्वीकार गर्दैन र यदि श्री ५ महाराजाधिराजले सो बील, प्रस्ताव हेरफेर तथा संशोधनलाई पास गर्नु सार्वजनिक हितको दृष्टिले उचित सम्झिबक्सिन्छ भने, मौसूफले सो बील प्रस्ताव हेरफेर तथा संशोधनलाई, सभाले पास गरेको प्रमाणित गर्न सकिबक्सनेछ ।

२८ र. श्री ५ महाराजाधिराजले यस ऐनका दफाहरूको अधीन रही, सभाको कार्यविधि तथा कार्यसञ्चालनको समबन्धमा नियमहरू बनाउन सकिबक्सिनेछ ।

४. प्रधान ऐनको दफा २८ रद्द गरिनेछ र त्यसको ठाउँमा निम्न लिखित दफा २८ राखिनेछ ।

२८ वार्षिक आर्थिक विवरण वा बजेट सल्लाहकार सभाको समक्ष राखिनेछ र सभालाई सो आर्थिक विवरण वा बजेटमाथि छलफल गर्न अथवा मत दिने अधिकार रहनेछ ।

परन्तु, श्री ५ महाराजाधिराजको व्यक्तिगत कोष अथवा त्यससँग सम्बन्धित विषयहरूमाथि सभाले छलफल गर्न सक्नेछैन ।

र, दफा २८ म तथा य.भ. का नियमहरू, यस दफाका अधीन कुराहरूमाथि पनि लागू हुनेछन् ।

५. अन्तरीम विधानको दफा २९ को उपदफा (२) क रद्द गरिई त्यसको ठाउँमा निम्नलिखित उपदफा २क. राखीनेछ ।

सल्लाहकार सभाको अर्को अधिवेशन सुरू भएको तीन महीना पुगेपछि खारिज हुनेछ ।

# अनुसूचि-१

१. मन्त्री, राज्यमन्त्री तथा उप-मन्त्रीको निमित्त पदको शपथको बेहोरा-

म ------------ ईश्वरको नाउँमा शपथ लिन्छु ---- कि. म. श्री ५ महाराजाधिराज,

सत्यनिष्ठाले प्रतिज्ञान गर्दछु । मौसूफको उत्तराधिकारीहरू तथा कानूनद्वारा स्थापित अन्तरीम विधानप्रति श्रद्धा र निष्ठा राख्नेछु र नेपालको मन्त्री, राज्यमन्त्री, उपमन्त्रीको रूपमा आफ्नो कर्तव्यको पालन श्रद्धापूर्वक तथा शुद्ध अन्त करणले गर्नेछु र भय या पक्षपात, अनुराग या द्वेष नराखी म सब प्रकारका व्यक्तिहरूप्रति विधान र कानूनको अनुसार न्याय गर्नेछु ।

२. मन्त्री, राज्यमन्त्री, उपमन्त्रीको निमित्त गोपनीयताको शपथको बेहोरा-

म ------------ ईश्वरको नाउँमा शपथ लिन्छु ---- कि कुनै पनि यस्तो कुरा जो सत्यनिष्ठाले प्रतिज्ञान गर्दछु

कि, - मन्त्री, राज्यमन्त्री, उपमन्त्रीको रूपमा विचारार्थ मकहाँ ल्याइन्छ अथवा मलाई ज्ञात हुन्छ, आफ्नो कर्तव्यको उचित पालन गर्दा आवश्यक परेबाहेक, अन्य कुनै अवस्थामा कसैलाई पनि कुनै कुरा पनि प्रत्यक्ष अथवा अप्रत्यक्षरूपले सूचित अथवा प्रकट गर्दिन ।

३. सल्लाहकार सभाको सदस्यको निमित्त शपथको व्यहोरा;

सल्लाहकार सभाको सदस्य मनोनीत भएको म -------------------

<u>ईश्वरको नाउँमा शपथ लिन्छु</u>

सत्यनिष्ठाले प्रतिज्ञान गर्दछु

कि म श्री ५ महाराजाधिराज र मौसूफको उत्तराधिकारीहरूप्रति तथा कानूनद्वारा स्थापित अन्तरीम विधानप्रति श्रद्धा र निष्ठा राख्नेछु र आफूले ग्रहण गर्न लागेको पदको कर्तव्यहरूको पालन श्रद्धापूर्वक गर्नेछु ।

(नेपाल गजेट २००९।३।१७)

# नेपाल अन्तरीम शासन विधान (तेस्रो संशोधन) २०१०

नेपाल अन्तरीम शासन विधान २००७ को मनसाय र त्यसमा लेखिएका कुराहरूको परिणाम स्पष्ट गर्नालाई र तल लेखिएका केही अन्य तात्पर्यका लागी सो ऐनमा अरू पनि संशोधन गर्नुपर्ने आवश्यक भएको हुनाले श्री ५ महाराजाधिराजबाट मौसूफको राजकीय शक्ति तथा विशेषाधिकारको प्रयोग गरी देहाय बमोजिमको कानून बनाई जारी गरिबक्सेको छः-

१. (१) यो ऐन-'नेपाल अन्तरीम शासन विधान (तेस्रो संशोधन) २०१०' भनिनेछ ।

(२) नेपाल अन्तरीम शासन विधान २००७ लागू भएकै मितिदेखि यो ऐन लागू भएको मानिनेछ ।



२. व्याख्याः- नेपाल अन्तरीम शासन विधान २००७ (जसलाई तल ऐन भनिनेछ) को दफा १ पछि निम्न लिखित दफा थपिनेछ ।

"१ क. यस ऐनको व्याख्यामा नेपाल कानून व्याख्यासम्बन्धी ऐन प्रयोग गरिनेछः-

३. मूल ऐनको दफा २ खारिज गरिनेछ तथा त्यसका ठाउँमा निम्नलिखित दफा राखिनेछः-

"२. (१) यस परिच्छेदमा लेखिएका कुराहरू लागू हुनेबारे- यस परिच्छेदका कुराहरूलाई नेपालको कुनै अदालतद्वारा लागू गरिनेछैन तथा यो ऐन चालु हनु अगावै वा चालु भएपछि बनेको कुनै नेपाल कानून वा सो कानूनअन्तरगत

बनेको नियम वा आदेश यस परिच्छेदका कुराहरूसँग केवल बाझिन्छ भन्दैमा अमान्य ठहरिनेछैन ।

(२) यस परिच्छेदका कुराहरूमा उल्लेख गरिएका सिद्धान्तहरूलाई उपदफा (१) मा लेखिएका कुराको अधीनमा रही सरकारले मुलुकको शासनमा मूलभूत सिद्धान्त भनी मान्नेछ । प्रचलित नेपाल कानूनलाई सकभर चाँडै र अबउप्रान्त बनाइने कानूनसमेत यी सिद्धान्तमा ढाल्ने सरकारको कर्तव्य हुनेछ ।"

४. मूल ऐनका दफा ३, ४, ५, ६, ७, ८, ९, १०, ११, १२, १३, १४, १५, १६, १७, र १९ मा 'राज्य' भन्ने लबजका सट्टा 'सरकार' भन्ने लबज राखिनेछ ।

५. मूल ऐनको दफा १६ खारिज गरिनेछ तथा त्यसका ठाउँमा निम्नलिखित दफा राखिनेछः-

"१६ कानूनको मूल सिद्धान्तः-

(१) कुनै कर कानूनको अख्तियारविना लगाइने वा असूल गरिनेछैन

(२) प्रचलित कानूनका अधीनमा रही सबै नागरिकहरूलाईः-

(क) वाक र प्रकाशन स्वतन्त्रताको

(ख) शान्तिपूर्वक र बिनाहतियार सम्मेलन सभा गर्ने ।

(ग) संस्था तथा संघ खडा गर्ने ।

(घ) नेपाल राज्यभर विना रोकटोक घुमफिर गर्ने ।

(ङ) नेपालको जुनसुकै भागमा पनि निवास गर्ने र घरजम गर्ने ।

(च) सम्पत्ति आर्जन गर्ने, भोग गर्ने, बेच बिखन गर्ने ।

(छ) कुनै पेशा, रोजगार, उद्योग वा व्यापार गर्ने ।

अधिकार हुनेछ ।

६. मूल ऐनको दफा २१ कोः-

(क) उपदफा (१) खारिज गरी त्यसका ठाउँमा निम्नलिखित उपदफा राखिनेछः-

"(१) श्री ५ महाराजाधिराजमा रहेको राज्यको कार्यकारिणी अधिकारबमोजिमको काम मौसूफले स्वयं वा मन्त्रीहरूद्वारा वा मौसूफका मातहतका अन्य कर्मचारीद्वारा गर्न सकिबक्सनेछ ।

तर श्री ५ महाराजाधिराजका मातहतका अधिकारी वर्गलाई अख्तियार एवं कार्यभार प्रदान गर्ने कुनै नेपाल कानूनको मान्यता तथा गतिशीलतामा यस दफामा लेखीएका कुनै कुराले बाधा पुऱ्याएको अर्थ लगाइनेछैन ।"

(ख) उपदफा (२) मा रहेको 'उक्त पदसम्बन्धि काम कुराको संचालन, ऐनबमोजिम नियमित हुनेछ' भन्ने लवज झिकिनेछ ।

७. (१) मूल ऐनको दफा २२ को उपदफा (१) खारिज गरिनेछ तथा त्यसका ठाउँमा निम्नलिखित उपदफा राखिनेछः-

"(१) नेपालको जुनसुकै अदालत वा सेना न्यायालयले जुनसुकै अपराधको दोषी ठहराएको जुनसुकै व्यक्तिलाई दण्ड सजाय माफी गर्ने, विलम्ब गर्ने, घटाउने बदल्ने वा मूलतबी राख्ने अख्तियार सरकारलाई हुनेछ ।'

(२) मूल ऐनको दफा २२ को उपदफा (२) मा रहेको दफा (१) को उपदफा (क) भन्ने लवज झिकी त्यसका सट्टामा 'उपदफा (१)' भन्ने लवज राखिनेछ ।

८. मूल ऐनको दफा २४ खारिज गरिनेछ तथा त्यसका ठाउँमा निम्नलिखित दफा राखिनेछ :-

"२४ (१) प्रधानमन्त्रीको नियुक्ति श्री ५ महाराजाधिराजबाट गरिबक्सिनेछ तथा अन्य मन्त्रीहरूको नियुक्ति श्री ५ महाराजाधिराजबाट प्रधान मन्त्रीको सल्लाह लिएर गरिबक्सिनेछ ।

(२) मन्त्रीहरू श्री ५ महाराजाधिराजका इच्छाअनुसार आफ्ना पदमा बहाल रहनेछन् ।

(३) श्री ५ महाराजाधिराजमा दिएको सल्लाहका लागी मन्त्रिमण्डल सामूहिकरुपले मौसूफ प्रति उत्तरदायी हुनेछ ।

९. मूल ऐनका दफा २५, २७, ३३ र ३८ मा ' श्री ५ महाराजाधिराज' भन्ने लवजका सट्टा 'सरकार' भन्ने लवज राखिनेछ ।

१०. मूल ऐनको दफा २९ खारेज गरिनेछ तथा त्यसका ठाउँमा निम्नलिखित दफा राखिनेछ ।

"२९. श्री ५ महाराजाधिराजको कानून बनाउने अधिकार बारेः- जुनसुकै नेपाल कानूनमा जुनसुकै भए तापनि वा जुनसुकै अदालतको जुनसुकै फैसलामा जुनसुकै कुरा भए तापनि नेपालको शान्ति व्यवस्था तथा राम्रो शासनका लागी श्री ५ महाराजाधिराजलाई कानून बनाउने राजकीय एवं संपूर्ण अधिकार प्राप्त औ रहनेछ भन्ने कुराको शंका निवारणका लागी यसद्वारा घोषणा तथा पुष्ट्याँई गरिन्छ ।



११. मूल ऐनको दफा २९ भनी निम्नलिखित नयाँ दफा थपिनेछः-

"२९ क. मन्त्रिमण्डलद्वारा प्रारम्भ गरिएका व्यवस्थापनः- (१) नेपालको शान्ति, व्यवस्था, तथा राम्रो शासनका लागी कानून बनाउँदा मन्त्रिमण्डलका सल्लाहअनुसार श्री ५ महाराजाधिराजबाट यस दफामा लेखिएबमोजिम गर्न सकिबक्सिनेछ ।

(२) श्री ५ महाराजाधिराजका विचारार्थ विधेयक (बिल) पेश गर्नु मन्त्रिमण्डलका लागी कानूनी हुनेछ ।

(३) उपदफा (२) अन्तरगत पेश गरिएको कुनै विधेयकलाई श्री ५ महाराजाधिराजबाट अनुमति दिन सकिबक्सिनेछ वा अनुमति दिन अस्वीकार गर्न सकिबक्सनेछ वा त्यस विधेयक वा त्यसका कुनै उल्लिखित कुराउपर तथा विशेषतः मौसूफद्वारा सिफारिस भएको कुनै

संशोधन ल्याउने वाञ्छनीयताउपर मन्त्रिमण्डलको विचारार्थ संदेशसाथ मौसूफबाट फर्काइदिन सकिबक्सिनेछ। मन्त्रिमण्डलले पनि सोहीबमोजिम विधेयकउपर पुनर्विचार गर्नेछ ।

(४) यस किसिमले पेश गरिएको कुनै विधेयकलाई श्री ५ महाराजाधिराजबाट अनुमति बक्सेपछि सो विधेयक कानून हुनेछ तथा सोहीबमोजिम लागू हुनेछ ।

(५) परिच्छेद ४ मा लेखिएका कुराहरूका अधीनमा रही यो दफा लागू हुनेछ ।

तर सल्लाहकार सभाद्वारा विचार नगरिएको तथा स्वीकृत नभएको विधेयक श्री ५ महाराजाधिराजको विचारार्थ पेश गर्नु मन्त्रिमण्डलका लागी कानूनी हुनेछः-

(i) यदि परिच्छेद ४ मा लेखिएबमोजिमको सल्लाहकार सभाको गठन भएको छैन भने वा ।

(ii) यदि परिच्छेद ४ मा लेखिएबमोजिम गठन भएको सल्लाहकार सभाको अधिवेशन चालु छैन र मन्त्रि-मण्डलका विचारमा विधेयकमा प्रस्तावित किसिमको कानून तुरुन्त बनाउनु सार्वजनिक हितका दृष्टिले जरुरी छ भने ।"

१२. (१) मूल ऐनका दफा ३०, ३१, ३२ र ४५ झिकिनेछन् ।

(२)दफा ३० को रुपमा निम्नलिखित दफा राखिनेछः-

"३०.(१) एक प्रधान न्यायालय रहनेछ ।

(२) प्रधान न्यायालयको गठन, अधिकार तथा कार्य, कानूनबमोजिम तोकिनेछ।"

१३. नेपाल अन्तरीम शासन विधान (दोस्रो संशोधन) २००९ द्वारा थपिएको मूल ऐनको परिच्छेद १ (क) लाई परिच्छेद ४ र त्यसमा परेका दफाहरूलाई सोहीबमोजिम सिलसिला नम्बर राखी मिलाइनेछन् ।

१४. जुनसुकै अदालतको जुनसुकै फैसला आदेश वा डिग्री भए पनि यस ऐनको अनुसूचिमा उल्लिखित कुनै नेपाल कानून अमान्य हुने वा कहिल्यै अमान्य भएको पनि मानिनेछैन ।

१५. यस ऐन तथा नेपाल अन्तरीम शासन विधान (दोस्रो संशोधन) २००९ द्वारा थपिएको वा संशोधित मूल ऐनका दफाहरूको क्रमानुगत संख्या फेरी मिलाइनेछ । यस प्रकार रुपान्तर भएको ऐन नेपाल गजेटमा फेरि प्रकाश गरिनेछ र आइन्दा त्यसलाई नेपाल अन्तरीम शासन विधान भनिनेछ ।

<u>अनुसूची</u>

१. नेपाल सार्वजनिक सुरक्षा ऐन, २००७.

२. काठमाडौं उपत्याकाञ्चल कमिश्नर मैजिष्ट्रेटको सवाल, २०१०

माघ ७।२०१०

# नेपाल अन्तरिम शासन विधान (चौथो संशोधन) २०१५

स्वस्ति गिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविध विरुदावली विराजमान मानोन्नत ओजस्वी राजन्य प्रोज्जवल नेपालतारा अति ओजस्वी त्रिभुवनप्रजातन्त्र श्रीपद ॐ रामपट्ट अतुलज्योतिर्मय त्रिशक्तिपट्ट अतिप्रबल गोरखादक्षिबाहु महाधिपति फिल्डमार्शल र सर्वोच्च कम्याण्डर इन चीफ श्रीमन्महाराजाधिराज श्री श्री श्री महाराजमहेन्द्रवीरविक्रम जङ्गबहादुर शाहबहादुर शमशेर जङ्गदेवानाम् सदा समरविजयिनाम् ।

२०१५ सालको ऐन नं. ६

**नेपाल अन्तरिमशासनविधानलाई संशोधन गर्ने ऐन**

नेपाल अन्तरिम शासन विधान (यसपछि मूल ऐन भनिएको) लाई संशोधन गर्न आवश्यक परेकोले श्री ५ महाराजाधिराजबाट यो ऐन बनाई जारी गरिबक्सेको छ ।

१. **संक्षिप्त नामः-** यस ऐनको नाम नेपाल अन्तरिमशासन विधान (चौथो संशोधन) २०१५ रहेकोछ ।

२. **मूल ऐनको प्रस्तावनमा संशोधनः-** मूल ऐनको प्रस्तावनाको पहिलो, दोस्रो तेस्रो र चौथो पैरको सट्टा निम्नलिखित शब्दहरू राखिएको छ ।

नेपालको निमित्त एक संविधान पनि प्रारम्भ नभएसम्म राज्यको शासन कुनै निश्चित विधान, नियम र सिद्धान्त बमोजिम गर्नु पर्ने आवश्यक भएकोले ।

३. **<u>मूल ऐनको दफा २४ मा संशोधनः-</u>** मूल ऐनको दफा २४ को उपदफा (१) मा रहेको प्रधानमन्त्रि "शब्दहरू पछि" वा श्री ५ महाराजाधिराजबाट मनोनीत गरिबक्सेको मन्त्रि शब्दहरू थपिएकोछ ।

४. **<u>मूल ऐनको दफा २५ मा संशोधनः-</u>** मूल ऐनको दफा २५ को उपदफा (१) पछि निम्नलिखित प्रतिबन्धात्मक वाक्यांश थपिदिएकोछः-

तर प्रधानमन्त्रि नियुक्त नभएकोमा सबै मन्त्रिहरूका नियुक्ति मौसूफका निजीतजबीज बमोजिम हुनेछ ।

५. **<u>मूल ऐनको दफा २६ मा संशोधनः-</u>** मूल ऐनको दफा २६ को उपदफा (१) को सट्टा निम्नलिखित उपदफा (१) राखिएकोछ ।

(१) नेपाल राज्यको कार्यकारिणी काम श्री ५ को सरकारको नाममा रहनेछ ।

६. **<u>मूल ऐनको दफा २७ मा संशोधनः-</u>** (१) मूल ऐनको दफा २७ मा रहेको प्रधानमन्त्रि शब्दहरू पछि वा प्रधानमन्त्रि नियुक्त नभएकोमा सो कामको निमित्त श्री ५ महाराजाधिराजबाट मनोनीत गरिबक्सेका मन्त्रि शब्दहरू थपिएकोछ ।

(२) मूल ऐनको दफा २७ को खण्ड (ख) को अन्तमा "र" शब्द थपिएको छ ।

७. **<u>मूल ऐनको दफा ३३ संशोधनः-</u>** मूल ऐनको दफा ३३ को उपदफा २ मा रहेको संविधान सभाको गठन भएपछि शब्दहरूको सट्टा संविधान बनी प्रारम्भ भएपछि शब्दहरू राखिएको छ ।

८. **<u>मूल ऐनको दफा ५८ मा संशोधनः-</u>** मूल ऐनको ५८ दफा पछि निम्नलिखित दफा ५८ (क) थपिएकोछ-

(क) शंका निवारणको लागि सपष्ट गरिन्छ कि सल्लाहकार सभाले निर्णय गरेको कुनै कुराले मन्त्रि मण्डललाई विघटन गर्न वा कुनै मन्त्रि वा मन्त्रिमंडलले राजीनामा दिन कर लगाएको मानिनेछैन तर सल्लाहकार सभाको बहुमतको निर्णयको उचित कदर श्री ५ को सरकारले गर्नेछ ।

९. **<u>मूल ऐनको दफा ६८ मा संशोधनः-</u>** मूल ऐनको दफा ६८ मा रहेको नेपालको निमित्त एक विधान बनाउने विधान परिषद्को शब्दहरूको सट्टा नेपालको निमित्त संसदको शब्दहरू राखिएको छ ।

१०. **<u>रूपान्तरः-</u>** मूल ऐन र अन्य नेपाल कानूनमा विषय वा प्रसंगबाट अर्को अर्थ नलागेमा सरकार वा नेपाल सरकार भन्ने शब्दहरू उल्लेख भएका ठाउँमा सो शब्दहरूको सट्टा श्री ५ को सरकार भन्ने शब्दहरू रहेको सम्झनु पर्छ ।



लालमोहर सदर मिति २०१५।२।२।५ मा

# नेपाल अन्तरिम शासन विधान (पाँचौ संशोधन) २०१५

स्वस्ति गिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविध विरुदावली विराजमान मानोन्नत ओजस्वी राजन्य प्रोज्जवल नेपालतारा अति ओजस्वी त्रिभुवनप्रजातन्त्रश्रीपद ॐ रामपट्ट अतुलज्योतिर्मय त्रिशक्तिपट्ट अतिप्रबल गोरखादक्षिबाहु महाधिपति फिल्डमार्शल र सर्वोच्च कम्याण्डर इन चीफ श्रीमन्महाराजाधिराज श्री श्री श्री महाराज महेन्द्रवीरविक्रम जङ्गबहादुर शाहबहादुर शमशेर जङ्गदेवानाम् सदा समरविजयिनाम् ।

२०१५ सालको ऐन नं. १३

<u>नेपाल अन्तरिमशासन विधानलाई संशोधन गर्ने ऐन</u>

नेपाल अन्तरिम शासन विधान (यसपछि मूल ऐन भनिएको) लाई संशोधन गर्न आवश्यक परेकोले श्री ५ महाराजाधिराजबाट मन्त्रिपरिषदको सल्लाह अनुसार यो ऐन बनाई जारी गरिबक्सेको छ ।

१. **संक्षिप्त नामः-** यस ऐनको नाम नेपाल अन्तरिम शासन विधान (पाँचौ संशोधन), २०१५ रहेकोछ ।

२. **रूपान्तरः-** मूल ऐनको दफा २४, दफा २५, दफा २७, दफा ३१, दफा ६३, दफा ५३, दफा ५८ (क), दफा ७१ र दफा ७२ मा मन्त्रिमण्डल भन्ने शब्दहरू उल्लेख भएका ठाउँमा सो शब्दहरूको सट्टा मन्त्रिपरिषद् भन्ने शब्दहरू राखिएको छ ।

३. **मूल ऐनको दफा ४१ मा संशोधनः-** मूल ऐनको दफा ४१ को सट्टा निम्नलिखित दफा ४१ राखिएकोछः-

४१. अध्यक्ष तथा उपाध्यक्षको चुनावः- श्री ५ महाराजाधिराजले तोकिबक्सेको सदस्य अथवा व्यक्तिको सभापतित्वमा सल्लाहकार सभाले दुईजना सदस्यलाई क्रमशः आफ्नो अध्यक्ष तथा उपाध्यक्ष चुन्नेछ र पछि पनि जैले जैले, अध्यक्ष अथवा उपाध्यक्षको पद रिक्त हुनेछ । कुनै अन्य सदस्यलाई, स्थितिअनुसार अध्यक्ष अथवा उपाध्यक्ष चुन्नेछ । अध्यक्ष र उपाधयक्षको चुनाव सभामा, उपस्थित सदस्यहरूको बहुमतले गरिन्छ, तथा सभाका पदेन सदस्यहरू यी पदका चुनावको निमित्त उम्मेदवार खडा हुन पाउने छैनन् ।

४. **मूल ऐनको दफा ६४ मा संशोधनः-** मूल ऐनको दफा ६४ को सट्टा निम्नलिखित दफा ६४ राखिएको छः-

६४. लोक सेवा आयोगः- नेपालको निमित्त एक लोक सेवा आयोग (पब्लिक सर्भिस कमिशन) रहनेछ । त्यसमा एक सभापति र श्री ५ महाराजाधिराजबाट तोकि बक्से जति अरू सदस्य रहनेछन् ।

५. **रूपान्तरः-** मूल ऐनको दफा ६५, दफा ६६ र दफा ६७ मा "पब्लिक सर्भिस कमिशन" भन्ने शब्दहरू उल्लेख भएका ठाउँमा सो शब्दहरूको सट्टा "लोक सेवा आयोग" भन्ने शब्दहरू राखिएकोछ ।

६. मूल ऐनको दफा ६९ मा संशोधनः- मूल ऐनको दफा ६९ को सट्टा निम्नलिखित दफा ६९ राखिएकोछः-

६९. <u>आयोग (कमिशन)</u>:- (१) निवार्चनको निमित्त मताधिकारहरूको नामावली तयार गर्ने कामको रेखदेख, नियन्त्रण र निर्देश गर्ने र निर्वाचन गराउने र निर्वाचन सम्बन्धी शंका र मुद्दा हेरी निर्णय गर्नको निमित्त निर्वाचन अदालत नियुक्त गर्ने समेत अधिकार दिइ एक आयोग खडा गरिनेछ, जसलाई यस ऐनमा निर्वाचन आयोग भनिएकोछ ।

(२) निर्वाचन आयोगमा एक प्रधान निर्वाचन कमिश्नर र श्री ५ महाराजाधिराजबाट मन्त्रिपरिषद्का सल्लाह अनुसार समय समयमा तोकिबक्से बमोजिमका अरू निर्वाचन कमिश्नरहरू रहनेछन् । प्रधान निर्वाचन कमिश्नर र अरू निर्वाचन कमिश्नरहरू श्री ५ महाराजाधिराजबाट मन्त्रिपरिषदको सल्लाह अनुसार नियुक्त गरिबक्सनेछ ।

(३) निर्वाचन कमिश्नरहरूको पदको अवधि र सेवाका अरू शर्तहरू श्री ५ महाराजाधिराजाबाट नियमद्वारा तोकि बक्से बमोजिम हुनेछन् ।

तर प्रधान निर्वाचन कमिश्नर र अरू निर्वाचन कमिश्नरहरू सर्वोच्च अदालतका न्यायाधीश जुन अवस्थामा र जुन रीतले खारेज हुन्छन् सोही बमोजिम बाहेक खारेज हुने छैनन् । नियुक्त भएपछि निजहरूलाई मर्का पर्ने गरी निजहरूको सेवाका शर्तहरूमा हेरफेर गरिने छैन ।

लालमोहर सदर मिति २०१५।२।१९ मा

# नेपाल अन्तरीम शासन (छैठौं संशोधन) विधान, २०१६

स्वस्ति श्री गिरिराज चक्रचूडामणि नरनारायणेत्यादि विविध विरूदावली विराजमान मानोन्नत ओजस्वी राजन्य प्रोज्जवल नेपालतारा अति ओजस्वी त्रिभुवनप्रजातन्त्र श्रीपद ॐ रामपट्ट अतुलज्योतिर्मय त्रिशक्ति पट्ट अतिप्रबल गोरखादक्षिबाहु महाधिपति फिल्डमार्शल र सर्वोच्च कम्याण्डर इनचीफ श्री मन्महाराजाधिराज श्री श्री श्री महाराज महेन्द्र वीर विक्रम जङ्गबहादुर शाहबहादुर शमशेर जङ्गदेवानाम् सदासमर विजयिनाम् ।

२०१६ सालको ऐन नं. ७

<u>नेपाल अन्तरिम शासन विधानलाई संशोधन गर्न बनेको ऐन</u>

नेपाल अन्तरीम शासन विधान (यसपछि मूल ऐन भनिएको) लाई संशोधन गर्न आवश्यक परेकोले श्री ५ महाराजाधिराजबाट मन्त्रि-मण्डलका सल्लाह अनुसार यो ऐन बनाई जारी गरिबक्सेकोछ ।



१. **<u>संक्षिप्त नाम र प्रारम्भः-</u>** (१) यस ऐनको नाम नेपाल अन्तरीम शासन (छैठौं संशोधन) विधान, २०१६ रहेकोछ ।

(२) यो ऐन २०१६ साल जेष्ठ १३ गते देखि प्रारम्भ भएको मानिनेछ ।

२. **<u>मूल ऐनमा रूपान्तरः-</u>** मूल ऐनमा "मन्त्रि परिषद्" शब्दहरू उल्लेख भएका ठाउँहरूमा सो शब्दहरूको सट्टा "मन्त्रि-मण्डल" शब्दहरू राखिएकोछ ।

इति सम्बत् २०१६ साल आषाढ गते रोज शुभम्-

लालमोहर सदर मिति २०१६।३।१४।१ मा (नेपाल गजेट २०१६।३।१५)